# पारलैङ्गिक व्यक्तिहरूको Gender Affirming Health Care र कोभिड-१९ बन्दाबन्दी सम्बन्धी मागपत्र

नेपाल संवत् ११४१ तछला १४
२०७८ जेठ १७
2021 May 31

Ref. No. पत्रसंख्या ०७९/७७/७८
Date मिति २०७८/०२/०७
PN पत्र २

- श्री नेपाल सरकार, मन्त्रीपरिषद् ।
- श्री स्वास्थ्य तथा जनसंख्या मन्त्रालय । (संघीय)
- श्री सामाजिक विकास मन्त्रालय, (प्रदेश, सबै) ।

विश्वव्यापी नै कोभोड-१९ महामारी चुलिरहँदा यसको नियन्त्रणका लागि बन्दाबन्दी (लकडाउन) समेत भइरहेको अवस्था छ । महामारीले विषमपरिस्थिति लिइरहेको बेला अत्यावश्यक बाहेक अरु सबै सेवाहरू बन्द भएका छन् । तसर्थ हामी यस वक्तव्य मार्फत् पारलैङ्गिक व्यक्तिहरूको लागि अत्यावश्यक Gender Affirming Health Care उपलब्धीमा यहाँको ध्यानाकर्षण गराउन चाहन्छौं ।

विश्व स्वास्थ्य संगठनका अनुसार Gender-affirmative health care can include any single or combination of a number of social, psychological, behavioural or medical (including hormonal treatment or surgery) interventions designed to support and affirm an individual's gender identity.[1 2] पारलैङ्गिक व्यक्तिहरू (Transgender persons) ले आफ्नो लैङ्गिक पहिचान अनुसारको जीवनयापन गर्नका लागि अपनाउने विभिन्न प्रकारका चिकित्सकीय विधिहरू हुन् । यस अन्तर्गत विभिन्न प्रकारका थेरापि, औषधी प्रयोग, शल्यक्रिया लगायतका विषयहरू पर्दछन् ।

**त्यस मध्ये Hormone replacement therapy र Laser Hair Removal सेवाहरू पारलैङ्गिक व्यक्तिहरूको लागि अत्यावश्यक सेवाका रूपमा हामी पहिचान गर्दछौं ।**

---

[1] https://www.euro.who.int/en/health-topics/health-determinants/gender/gender-definitions/whoeurope-brief-transgender-health-in-the-context-of-icd-11
[2] Overview of gender-affirming treatments and procedures, UCSF Transgender Care https://transcare.ucsf.edu/guidelines/overview

Esan  जेरक्षना

Hormone replacement therapy मा पारलैङ्गिक महिलाहरूका लागि चक्की सेवनका रूपमा हर्मोनहरू उपलब्ध छन् तर कतिपय यी महिलाहरूका लागि सुइको माध्यमबाट प्रयोग गर्नुपर्ने हुन्छ । पारलैङ्गिक पुरुषहरूका लागि हर्मोन चक्कीका रूपमा उपलब्ध छैन, सुइकै माध्यमबाट प्रदान गरिनुपर्ने हुन्छ । यस्ता हर्मोनहरू नजीकको औषधी पसलहरूमा उपलब्ध नहुन सक्छ र ठूला अस्पतालहरूमा मात्र उपलब्ध हुने अवस्था छ । अधिकांश यस्ता हर्मोन औषधीहरू नेपालमा उपलब्ध नभएको भारत लगायत अन्य देशबाट आयात गर्नुपर्ने बन्दाबन्दीका कारण हर्मोन औषधीहरूको अभाव पनि भइरहेको छ । सुइको माध्यमबाट लिनुपर्ने कुनै औषधीका लागि सुइ दिन तालिम प्राप्त व्यक्ति र निकायमै जानुपर्ने हुन्छ । साथै सबैको घरमा उक्त औषधीहरू संचय गर्न मिल्ने वातावरण हुँदैन । त्यसै गरि Laser Hair Removal सेवा पनि सम्बन्धित संस्थामै गएर उपभोग गर्नुपर्ने हुन्छ ।

यस्तो सेवा प्राप्त गर्न नपाउँदा र वञ्चित हुँदा पारलैङ्गिक व्यक्तिहरूमा तनाव, व्यग्रता, उदासीनता लयागतका मनोउत्पीडनहरू बढ्ने, नीजको dysphoria लाई अझै उजागर गर्ने र व्यक्तिको समग्र मनोस्वस्थता (Mental Wellbeing) मै प्रतिकूल प्रभाव पार्दछ । यसका साथै पारलैङ्गिक व्यक्तिहरूको सामाजिक स्वीकार्यतामा पनि यसले प्रभाव पार्छ । उदाहरणका निम्ति : Laser Hair Removal आवश्यक पारलैङ्गिक महिलाहरूमा बन्दाबन्दीका कारण सामायिक रूपमा उक्त सेवाबाट वञ्चित भए उक्त intervention बन्द भई नीजको अनुहारमा रौं पलाउन थाल्छ जसकारण नीजको मनोस्वास्थ्य पार्ने उत्पीडन मात्र नभएर त्यस कारण नीजलाई महिलाको रूपमा भएको सामाजिक स्वीकार्यतामा प्रभाव पार्छ, नीजले नचाहँदा नचाहँदै आफू पारलैङ्गिक रहेको विषय खुलासा हुन पुग्छ, र यसबाट उसले सामाजिक लाञ्छना र विभेदको जोखिममा पनि पार्दछ । त्यसै गरि नियमित हर्मोन सेवा उपलब्धबाट वञ्चित भएमा क्रमशः reversal symptoms हरू देखा पर्न थाल्छ । अर्को उदाहरणका लागि hysterectomy नगरेका पारलैङ्गिक पुरुषहरूमा हर्मोन प्रदान बन्द भएपछि महिनावारी हुन सुरु हुन सक्छ र पुरुषको रूपमा लामो समय देखि नभएको महिनावारी पुनः सुरु हुँदा यसले नीजलाई प्रतिकूल असर पुर्याएको हुन्छ । हर्मोन प्रयोग गर्दै गरेका व्यक्तिहरूलाई इवाट्टै हर्मोन प्रदान नहुँदा यसले समस्थ स्वास्थ्यमै प्रतिकूल असर पुर्याउँछ । Sex reassignment surgery गरेका व्यक्तिहरूलाई पनि हर्मोन जीवनभरी नै आवश्यक रहेको हुन्छ र त्यसको अभावमा Obesity, Osteoporosis, Cardiovascular disease लगायत थुप्रै स्वास्थ्य समस्याहरू निम्तिंदै जान्छ ।

**अतः हर्मोन विशेषज्ञ Endocrinologist हरूसँगको परामर्शमा पारलैङ्गिक व्यक्तिहरूलाई Hormone Replacement Therapy को लागि आवश्यक औषधीहरूको सूची बनाई त्यसको आपूर्ती र उपलब्धता सुनिश्चित गर्न हामी माग गर्दछौं ।** यसो गर्दा एउटै वा उस्तै प्रकृतिको औषधी

हुँदैमा एकै ब्रान्डको मात्र उपलब्ध गराएर ढुक्क हुनुहुँदैन । उदाहरणको लागि :- Estrogen हर्मोनको लागि थुप्रै ब्रान्डका औषधीहरू र चक्कीको माध्यम, सुइको माध्यम, transdermal patch को माध्यम लगायतका माध्यमहरूमा उपलब्ध छन् । अब कसैलाई कुनै ब्रान्डको औषधी फाप्ने कुनै नफाप्ने हुन्छ, कसैलाई कुनैले धेरै side effects गर्ने र कुनैले थोरै गर्ने हुन्छ, कसैलाई चक्कीको माध्यमबाट सेवन गर्दा धेरै side effects हुने र सुइको माध्यमबाट कम हुने हुन सक्छ, कसैलाई चक्कीकै माध्यम उपयुक्त हुन सक्छ, मृगौंला रोगीहरूलाई चक्की मार्फत् हर्मोन उपयोग गर्दा मृगौंलामा असर पुग्ने भएकाले transdermal patch सुरक्षित हुन्छ । त्यसैले आवश्यक औषधीहरू उपलब्ध गराउँदा विभिन्न विकल्पहरूको समेत सुनिश्चित गर्नुपर्छ ।

- Laser Hair Removal प्रक्रियालाई सुन्दरताको दृष्टिकोणबाट cosmetic procedure को रूपमा मात्र लिइने गरिन्छ, तर पारलैङ्गिक व्यक्तिहरूमा विशेषतः पारलैङ्गिक महिलाहरूलाई यो सेवा उनीहरूको overall wellbeing सँग सम्बन्धित medically necessary प्रक्रियाका रूपमा हेर्न आवश्यक छ । समग्र Gender Affirming Health Care लाई medically necessary प्रक्रियाका रूपमा हेर्न आवश्यक छ ।

तसर्थ **पारलैङ्गिक व्यक्तिहरूको Gender Affirming Health Care मा Hormone Replacement Therapy (HRT) को उपभोग र Laser Hair Removal प्रक्रियालाई अत्यावश्यक सेवाका रूपमा समावेश गरि कोभिडमहामारीको बेला यी सेवाहरूको आपूर्तीमा १९-सहजता सुनिश्चित गर्न पनि माग राख्दछौं ।**

**संयुक्त जारी**









कार्यकारी निर्देशक,
इशान रेग्मी,
क्याम्पेन फर चेन्ज
campaignforchange17@gmail.com

कार्यकारी निर्देशक,
रुक्शना कपाली,
क्वयेर युथ ग्रुप
queeryouthgroup.nepal@gmail.com

कार्यकारी निर्देशक,
मनिषा ढकाल,
नील हिरा समाज
info@bds.org.np